# ब्रेटन उड्स सम्झौता ऐन, २०१८

लालमोहर र प्रकाशन मिति

२०१८।४।५

संशोधन गर्ने ऐन

१. नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ २०१९।१२।३०

२. ब्रेटन उड्स सम्झौता (पहिलो संशोधन) ऐन, २०२७ २०२७।१२।३०

३. ब्रेटन उड्स सम्झौता (दोस्रो संशोधन) ऐन, २०३४ २०३४।९।१८

प्रमाणीकरण र प्रकाशन मिति

८. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६[☺] २०६६।१०।७

२०१८ सालको ऐन नं. १०

## अन्तर्राष्ट्रिय द्रव्यकोष र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको स्थापना र सञ्चालन सम्बन्धी अन्तर्राष्ट्रिय सम्झौताहरू स्वीकार गरी नेपालले उक्त कोष र बैंङ्कको सदस्य हुन पाउने गर्नको निमित्त बनेको ऐन

**प्रस्तावना** : जुलाई १९४४ मा संयुक्त राज्य अमेरिकाको न्यू हेम्पशायर, ब्रेटन उड्समा भएको संयुक्त राष्ट्र द्रव्य र आर्थिक सम्मेलनमा गरिएको सम्झौता अनुसार अन्तर्राष्ट्रिय द्रव्य कोष र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्क स्थापित भएको र,

अन्तर्राष्ट्रिय द्रव्य कोष र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कले यस ऐनको अनुसूची १ र २ मा उल्लेख भएका शर्तहरूमा नेपाललाई अन्तर्राष्ट्रिय द्रव्य कोष र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सदस्य बनाउन सकिने भनी शर्तहरू तोकेको र,

माथि लेखिए बमोजिमका शर्तहरू पूरा गर्नका लागि यसपछि लेखिएका कुराहरूको व्यवस्था गर्नु आवश्यक भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट [⁂]नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम “ब्रेटन उड्स सम्झौता ऐन, २०१८” रहेकोछ ।

---

☺ यो ऐन २०६५ साल जेठ १५ गतेबाट लागू भएको ।

⁂ नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "कोष" भन्नाले अन्तर्राष्ट्रिय द्रव्य कोष सम्झनु पर्छ ।

(ख) "बैंङ्क" भन्नाले अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्क सम्झनु पर्छ

(ग) "कोष सम्झौता" भन्नाले कोषको सम्झौताका धाराहरू सम्झनु पर्छ [+]र सो शब्दहरूले कोषको सम्झौतामा हुने संशोधनहरूलाई समेत बुझाउँछ ।

(घ) " बैंङ्क सम्झौता" भन्नाले बैङ्कको सम्झौताका धाराहरू सम्झनु पर्छ ।

[▲](ङ) "विशेष रकम झिक्ने अधिकार" भन्नाले कोषले अन्तर्राष्ट्रिय तरलताको खाँचो पूर्ति गर्न भागिदारहरूमा बाँडफाँड गरिने कोषमा रहेको विशेष खाताबाट रकम झिक्ने अधिकारलाई जनाउँछ ।

३. **सम्झौताहरू गर्ने र स्वीकृतिका लिखतहरू दाखिल गर्ने अधिकार** : अर्थ मन्त्रीले आफ्नो हस्ताक्षरको लिखत गरी सो लिखतमा तोकिएको व्यक्तिलाई नेपाल सरकारको तर्फबाट देहाय बमोजिमको काम गर्ने अधिकार दिन सक्नेछ :-

(क) अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताका धाराहरूमा र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सम्झौताका धाराहरूमा हस्ताक्षर गर्ने ।

(ख) नेपाल सरकारले नेपाल कानून बमोजिम सम्बन्धित सम्झौताहरू र त्यसमा तोकिएको शर्तहरू, जुन शर्तहरूमा नेपाललाई अन्तर्राष्ट्रिय द्रव्य कोष र अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सदस्यता प्रदान गरिनेछ, स्वीकार गरेको छ भन्ने बेहोरा जनाई कोष सम्झौता र बैंङ्क सम्झौताको स्वीकृतिको लिखत संयुक्त राज्य अमेरिकाको सरकारमा दाखिल गर्ने ।

[+](ग) [❷]कोष सम्झौताको पहिलो संशोधन स्वीकार गर्ने र सो संशोधनद्वारा व्यवस्था गरिएको विशेष रकम झिक्ने अधिकारमा नेपाललाई भागिदार बनाउन मञ्जूरीको लिखत दाखिल गर्ने ।

---

[+] पहिलो संशोधनद्वारा थप ।

[▲] दोस्रो संशोधनद्वारा थप ।

[❷] दोस्रो संशोधनद्वारा संशोधित ।

▲(घ) कोष सम्झौताको दोस्रो संशोधन स्वीकार गर्ने र सो संशोधनमा उल्लेख गरिएको दायित्वहरू स्वीकार गरी मञ्जूरीको लिखत दाखिल गर्ने र कोष तथा बैंङ्कमा नेपालको कोटा र शेयरमा हुने वृद्धिलाई स्वीकार गर्ने ।

४. **कोष र बैंङ्कलाई रकमहरू भुक्तानी गर्ने अधिकार** : अनुसूची ●………….. मा लेखिएका शर्तहरू र कोष सम्झौता र बैंङ्क सम्झौता अनुसार नेपाल सरकारको तर्फबाट समय समयमा सो कोष र बैंङ्कलाई भुक्तानी गर्नु पर्ने हुन आएको रकमहरू नेपाल सरकारको सञ्चित कोषबाट भुक्तानी गर्ने अधिकार अर्थ मन्त्रीलाई हुनेछ ।

+४क. **मुद्रा प्रदान गर्ने दायित्व** : अर्थ मन्त्रीले नेपाल सरकारको तर्फबाट कोष सम्झौताको अनुसूची १३ बमोजिमको ❷धारा १९ को दफा ४ मा लेखिएबमोजिम कोषले तोकेको अवस्थामा विशेष रकम झिक्ने अधिकारहरू प्रयोग गर्ने भागिदारलाई माग भएमा ❷स्वतन्त्र रूपले प्रयोग गर्न सकिने मुद्रा प्रदान गर्नेछ र त्यस्तो मुद्राको भुक्तानी नेपाल सरकारको सञ्चित कोषबाट गरिनेछ ।

+४ख. **प्रयोग गरिएको विशेष रकम झिक्ने अधिकारहरूको पुनः स्थापना गर्ने दायित्व** : अर्थ मन्त्रीले नेपाल सरकारको तर्फबाट कोष सम्झौताको अनुसूची १३ बमोजिमको ❷धारा १९ को दफा ६ (ए) मा लेखिएबमोजिमको विशेष रकम झिक्ने अधिकारहरूको प्रयोग गरिएमा प्रयोग गरिए जति पुनः संस्थापन गराउनेछ र सो गराउँदा गर्नु पर्ने सबै भुक्तानी नेपाल सरकारको सञ्चित कोषबाट गरिनेछ ।

▲४ग. **स्वतन्त्र रूपले प्रयोग गर्न सकिने मुद्रा प्रदान गर्ने दायित्व** : कोष सम्झौता अनुरूप स्वतन्त्र रूपले प्रयोग गर्न सकिने मुद्राको माग भएमा अर्थ मन्त्रीले नेपाल सरकारको तर्फबाट त्यस्ता मुद्राहरू प्रदान गर्न सक्नेछ ।

५. **प्रोमिशरी नोटहरू निष्काशन गर्ने अधिकार** : अर्थ मन्त्रीले नेपाल सरकारको तर्फबाट कोष सम्झौताको अनुसूची ३ बमोजिमको ❷धारा ३ को दफा ४ र बैंङ्क सम्झौताको अनुसूची ४ बमोजिमको धारा ५ को दफा १२ मा लेखिएबमोजिमको निर्ब्याजी र बेचबिखन गर्न नहुने अर्थपत्र

---

▲ दोस्रो संशोधनद्वारा थप ।
● दोस्रो संशोधनद्वारा झिकिएको ।
+ पहिलो संशोधनद्वारा थप ।
❷ दोस्रो संशोधनद्वारा संशोधित ।

वा ऋणपत्र, आफूले उचित ठानेको ढाँचामा सिर्जना गर्न र कोष वा बैंङ्कका नाउँमा जारी गर्न सक्नेछन र त्यसरी सिर्जना गरिएको र, जारी गरिएको अर्थपत्र वा ऋणपत्रको भुक्तानी नेपाल सरकारको सञ्चित कोषबाट गरिनेछ ।

६. **ऋण लिने अधिकार** : अर्थ मन्त्रीले नेपाल सरकारको तर्फबाट यस ऐनबमोजिम नेपाल सरकारको सञ्चित कोषबाट भुक्तान गर्नु पर्ने रकमको व्यवस्था गर्नको निमित्त निर्ब्याजी र बेचबिखन गर्न नहुने अर्थपत्र वा ऋणपत्र आफूले उचित ठानेको ढाँचामा सिर्जना गरी र नेपाल राष्ट्र बैंङ्कका नाउँमा जारी गरी ऋणहरू उठाउन सक्नेछ ।

(२) ☛नेपाल राष्ट्र बैंङ्क ऐन, २०१२ को ❷दफा २५ को खण्ड (११) मा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल राष्ट्र बैंङ्कले उपदफा (१) मा गरिएको व्यवस्थाबमोजिम सिर्जना र जारी गरिएको अर्थपत्र वा ऋणपत्रका आधारमा अर्थ मन्त्रीलाई ऋण दिन सक्नेछ र त्यसरी लिइएको ऋणको रकम ऋण लिइएको मितिले पाँच वर्षभित्र फिर्ता गरिनेछ ।

(३) उपदफा (१) अन्तर्गत सिर्जना गरी नेपाल राष्ट्र बैंङ्कका नाउँमा जारी गरिएको अर्थपत्र वा ऋणपत्रको भुक्तानी गर्नका लागि चाहिने रकम नेपाल सरकारको सञ्चित कोषबाट भुक्तानी गरिनेछ ।

७. **नेपाल राष्ट्र बैंङ्क फिस्कल एजेन्सी र डिपोजिटरी मनोनित हुने** : (१) नेपाल राष्ट्र बैंङ्कलाई कोष सम्झौताको अनुसूची ५ बमोजिमको धारा ५ को दफा १ को प्रयोजनको लागि फिस्कल एजेन्सी र कोष सम्झौताको अनुसूची ६ बमोजिमको धारा १३ को दफा २ को प्रयोजनको लागि डिपोजिटरी मनोनित गरिएकोछ ।

(२) नेपाल राष्ट्र बैंङ्कलाई बैंङ्क सम्झौताको अनुसूची ७ बमोजिमको धारा ५ को दफा ११ को प्रयोजनको लागि डिपोजिटरी मनोनित गरिएको छ ।

▲(३) नेपाल सरकारको तर्फबाट विशेष रकम झिक्ने अधिकार प्राप्त गर्ने, प्रयोग गर्ने, हस्तान्तरण गर्नेसम्बन्धी सबै काम तथा कोषसंग गरिने अन्य विनिमय कारोबारहरू नेपाल राष्ट्र बैंङ्कले गर्नेछ ।

---

☛ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ ले नेपाल राष्ट्र बैंङ्क ऐन, २०१२ लाई नेपाल राष्ट्र बैंङ्क ऐन, २०५८ मा रुपान्तर गरेको ।

❷ दोस्रो संशोधनद्वारा संशोधित ।

▲ दोस्रो संशोधनद्वारा थप ।

◆८. **कोष र बैंङ्कको स्थिति, त्यसलाई छुट र विशेषाधिकारहरू** : (१) प्रचलित नेपाल कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि कोष र बैंङ्कलाई कोष सम्झौताको अनुसूची ८ बमोजिमको धारा ९ र बैंङ्क सम्झौताको अनुसूची ९ बमोजिमको धारा ७ मा लेखिएबमोजिमको स्थिति छुट र विशेषाधिकारहरू प्राप्त हुनेछ ।

(२) प्रचलित नेपाल कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि कोष सम्झौताको अनुसूची १२ बमोजिमको ❷धारा २१ (बी) मा लेखिए बमोजिम विशेष रकम झिक्ने अधिकारहरूमा वा त्यसको कारवाई र व्यवहारमा कोष सम्झौताको धारा ९ बमोजिमको स्थिति छुट र विशेषाधिकारहरू प्राप्त हुनुको साथै सबै प्रकारको कर छुट हुनेछ ।

९. **विनिमयसम्बन्धी करारनामा लागू नहुने** : प्रचलित नेपाल कानूनमा जुनसुकै कुरा लेखिएका भए तापनि विनिमयसम्बन्धी करारनामा लागू नहुने बारे कोष सम्झौताको अनुसूची १० बमोजिमको धारा ८ को दफा २ (ख) मा लेखिएका कुराहरू नेपालभर कानून सरह पूर्णरूपले लागू हुने छन् ।

१०. **अनुसूचीमा संशोधन गर्ने अधिकार** : कोष सम्झौता र बैंङ्क सम्झौताको यो ऐनको अनुसूचीबमोजिमको कुनै कुरामा कुनै संशोधन गरिएमा सोहीबमोजिम नेपाल सरकारले समय समयमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी यो ऐनको अनुसूचीमा संशोधन गर्न सक्नेछ ।

११. **नियमहरू बनाउने अधिकार** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियमहरू बनाउन सक्नेछ ।

१२. × ………………………………

---

◆ पहिलो संशोधनद्वारा संशोधित ।

❷ दोस्रो संशोधनद्वारा संशोधित ।

× नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा झिकिएको ।

**द्रष्टव्यः**

१. नेपाल कानून संशोधन ऐन, २०२४ द्वारा रूपान्तर गरिएका शब्दहरू:
"अफिस" को सट्टा "कार्यालय"
"अफिसर" को सट्टा "अधिकृत"

२. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा रूपान्तर गरिएका शब्दहरू:
"श्री ५ को सरकार" को सट्टा "नेपाल सरकार"

३. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" र "अधिराज्य" भन्ने शब्दहरू झिकिएका छन् ।

४. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा रूपान्तर गरिएका शब्दहरू:
"श्री ५ को अर्थ मन्त्री" को सट्टा "अर्थ मन्त्री"

# अनुसूची-१

## अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्क

## १८१८ एच. स्ट्रिट, एन.डब्लू.

## वाशिङ्गटन २५, डी.सी.

## प्रस्ताव नं. १४४

## नेपाललाई बैंङ्कको सदस्यता

बैंङ्कको सम्झौताको ❑धारा २ को दफा १ (ख) बमोजिम नेपाल सरकार, नेपालले अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सदस्यताको लागि निवेदनपत्र दिएको, र

बैंङ्कको वाइ-लजको दफा २० बमोजिम कार्यकारी सञ्चालकहरूले नेपालका प्रतिनिधिहरूसंग परामर्श गरी यस निवेदनपत्र बारे गभर्नरहरूको बोर्डमा सिफारिश पेश गरेकोले,

गभर्नरहरूको बोर्डले देहायको शर्त र अवस्थाहरूमा नेपाललाई बैंङ्कको सदस्यतामा प्रवेश गराउने प्रस्ताव गरेकोछ :-

१. **परिभाषा** : यो प्रस्तावमा प्रयोग गरिएबमोजिमको,-

(क) "बैंङ्क" भन्नाले अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्क सम्झनु पर्छ ।

(ख) "धाराहरू" भन्नाले बैंङ्क सम्झौताका धाराहरू सम्झनु पर्छ ।

(ग) "डलरहरू" भन्नाले सन १९४४, जुलाई १ मा चालू भएको तौल र नाप (फाइननेस) को संयुक्त राज्य डलरहरू सम्झनु पर्छ ।

(घ) "चन्दा" भन्नाले सदस्यले चन्दा दिएको बैंङ्कको मूल धन (क्यापिटल स्टक) सम्झनु पर्छ ।

(ङ) "सदस्य" भन्नाले बैंङ्कको सदस्य सम्झनु पर्छ ।

२. **चन्दा** : बैंङ्कको सदस्यता स्वीकार गरी नेपालले बैंङ्कको मूल धनको प्रत्येक शेयरको १००,००० डलरको सममूल्य (पार भ्यालु) को १०० शेयरको निमित्त चाहिने रकम चन्दा बुझाउनु पर्छ ।

३. **कोषको सदस्यता** : बैंङ्कको सदस्यता स्वीकार गर्नुभन्दा पहिले नेपालले अन्तर्राष्ट्रिय द्रव्य कोषको सदस्यता स्वीकार गरी सो कोषको सदस्य बन्नु पर्छ ।

४. **चन्दाको भुक्तानी** : (क) बैंङ्कको सदस्यता स्वीकार गर्नुभन्दा पहिले नेपालले ती शेयरहरूका ½ भागको बुझाउनु पर्ने चन्दाको रकम बापत देहायबमोजिम बैंङ्कलाई बुझाउनु पर्छ :-

---

❑ बैंकले तोकिदिएका समयहरूमा तोकिदिएका शर्तहरू बमोजिम कोषको अरू सदस्यहरूको निमित्त सदस्यता खुला रहनेछ ।

(१) सो रकमको २ प्रतिशत सुन वा संयुक्त राज्य डलरहरू, र

(२) सो रकमको १८ प्रतिशतको प्रचलित विनिमय दरबमोजिम हुन आएको आफ्नो मुलुकको मुद्रा ।

(ख) ती शेयरहरूको अर्को ½ भागको बुझाउनु पर्ने चन्दाको रकम बापत सुन वा संयुक्त राज्य डलरहरूमा बुझाउनु पर्ने २ प्रतिशत भाग र सदस्यको मुद्रामा बुझाउनु पर्ने १८ प्रतिशत भागलाई गभर्नरहरूको बोर्डको प्रस्ताव नं.१२८ बमोजिमको चन्दाको रकमको २ प्रतिशत र १८ प्रतिशत भागको सम्बन्धमा गरिएकै आधारमा, प्रस्ताव नं. १२९ मा लेखिएबमोजिम असूल नगरी बाँकी राखिनेछ ।

५. **जाहेरी र सूचना पठाउने** : बैंङ्कको सदस्यता स्वीकार गर्नुभन्दा पहिले नेपालले स्वीकृतिको लिखतलाई हस्ताक्षर गरी दाखिल गर्न र यस प्रस्तावको प्रकरण ६ (घ) र (ङ) मा लेखिएबमोजिमको धाराहरूमा हस्ताक्षर गर्न आवश्यक सबै काम कारवाई गरी सकेको छ भन्ने कुराको जाहेरी बैंङ्कलाई पठाउनु पर्छ र बैंङ्कले ती काम कारवाईका सम्बन्धमा अनुरोध गरेबमोजिमको सूचना नेपालले बैंङ्कलाई पठाउनु पर्छ ।

६. **सदस्यता स्वीकार गर्ने** : नेपालले निम्नलिखित आवश्यकताहरू पूरा गरेको मितिमा यो प्रस्तावको प्रकरण २ मा लेखिएबमोजिमको चन्दादाताको रूपमा बैंङ्कको एक सदस्य हुनेछ :-

(क) अन्तर्राष्ट्रिय द्रव्य कोषको सदस्य भै,

(ख) यो प्रस्तावको प्रकरण ४ बमोजिम भुक्तानी मागिएको रकम भुक्तानी गरी,

(ग) यो प्रस्तावको प्रकरण ५ बमोजिम मागिएको जाहेरी र सूचना पठाई,

(घ) नेपालले आफ्नो कानून अनुसार यो प्रस्तावमा लेखिएबमोजिमका सबै शर्त र अवस्थाहरू र धाराहरू स्वीकार गरेकोछ र धाराहरू र यो प्रस्ताव अन्तर्गत आफ्ना सबै दायित्वहरू पूरा गर्नको निमित्त नेपालले आवश्यक सबै कदमहरू उठाई सकेकोछ भन्ने जाहेरीको लिखत संयुक्त राज्य अमेरिकाको सरकारमा दाखिल गरी,

(ङ) संयुक्त राज्य अमेरिकाको सरकारको अभिलेख गृह (आर्चिभ्स) मा रहेको धाराहरूको मूल प्रतिलिपिमा हस्ताक्षर गरी ।

७. **सदस्यता स्वीकार गर्ने हद अवधि** : नेपालले सन् १९६१, मार्च ३१ सम्ममा यो प्रस्तावबमोजिम बैंङ्कको सदस्यता स्वीकार गर्न सक्नेछ, तर असाधारण परिस्थितिले गर्दा यो प्रस्तावबमोजिम

नेपालले सदस्यता स्वीकार गर्न सक्ने हद अवधि बढाउन पर्ने भनी कार्यकारी सञ्चालकहरूले देखेमा सो अवधिलाई बढाउन सक्नेछ ।

## अनुसूची – २

## नेपालको सदस्यता बारेको प्रस्ताव

कोष सम्झौताको धाराहरूको धारा २ को दफा २ बमोजिम अन्तर्राष्ट्रिय द्रव्य कोषको सदस्यताको लागि नेपाल सरकार, नेपालले सन् १९६० अप्रेल १३ मा निवेदनपत्र दिएको, र

कोषको बाइलजको दफा २१ बमोजिम कार्यकारी सञ्चालकहरूले सो सरकारको प्रतिनिधिहरूसंग परामर्श गरी कार्यकारी सञ्चालकहरूको रायमा नेपाललाई कोषको सदस्यतामा प्रवेश गराउन गभर्नरहरूको बोर्डद्वारा तोकिन सक्ने शर्तहरू मञ्जूर गरेकोले,

गभर्नरहरूको बोर्डले, कार्यकारी सञ्चालकहरूको सिफारिश उपर विचार गरी नेपाललाई देहायका शर्त र अवस्थाहरूमा कोषको सदस्यतामा प्रवेश गराउने प्रस्ताव गरेकोछ :-

१. **परिभाषा** : यो प्रस्तावमा प्रयोग गरिएबमोजिमको-

(क) "कोष" भन्नाले अन्तर्राष्ट्रिय द्रव्य कोष सम्झनु पर्छ ।

(ख) "धाराहरू" भन्नाले अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताको धाराहरू सम्झनु पर्छ ।

(ग) "डलर" भन्नाले सन् १९४४ जुलाई १ मा चालू भएको तौल र नाप (फाइननेस) को संयुक्त राज्य डलरहरू सम्झनु पर्छ ।

२. **कोटा** : नेपालको कोटा ७५,००,००० पचहत्तर लाख डलर हुनेछ ।

३. **चन्दा** : नेपालको चन्दा यसको कोटाको बराबर हुनेछ र चन्दाको घटीमा ३½ प्रतिशत सुनमा र बाँकी नेपाली मुद्रामा भुक्तानी गरिनेछ ।

४. **चन्दाको भुक्तानी** : सुनमा भुक्तानी गर्नु पर्ने चन्दाको अंश नेपालको तर्फबाट धाराहरूमा दस्तखत भएको दिनसम्ममा भुक्तानी दिनु पर्नेछ । केही गरी नेपालले कोषको सदस्यता प्राप्त नगरेमा यसरी भुक्तानी दिएको सुन कोषले नेपाललाई फर्काइ दिनेछ । सुनमा भुक्तानी नभएको चन्दाको बाँकी अंश तल दिइएको प्रकरण ५ अनुसार नेपाली मुद्रामा प्रारम्भिक सममूल्य (पार भ्यालु) मञ्जूर गरिएको तीसौं दिनभन्दा अगावै भुक्तानी दिइनेछ ।

५. **सममूल्य (पार भ्यालु) को निर्धारण** : कोषले यसरी अनुरोध गरेको ३० दिनभित्र नेपालले आफ्नो मुद्राको प्रस्तावित सममूल्य (पार भ्यालु) को सूचना कोषलाई दिनेछ र उक्त प्रस्तावित सममूल्य ( पार भ्यालु) को सूचना कोषले प्राप्त गरेको ६० दिनभित्र नेपाल र कोषको बीचमा मुद्राको

प्रारम्भिक सममूल्य (पार भ्यालु) उपर मञ्जूरी गरिनेछ, तर कोषको उक्त ६० दिनको अवधिलाई बढाउन सक्नेछ र समूल्य (पार भ्यालु) बारे मञ्जूर हुन नपाउँदै उक्त बढाइएको म्याद समाप्त भएमा नेपालले कोषबाट आफूलाई अलग गरेको मानिनेछ । नेपालले सदस्यता स्वीकार गरेको समयमा प्रचलित भई राखेको विनिमय दरलाई सदस्यता स्वीकार गर्ने र यो प्रकरणबमोजिम प्रारम्भिक सममूल्य (पार भ्यालु) निर्धारण गर्ने बीचको अवधिमा कोषसंग अगावै परामर्श गरी परिवर्तन गर्न हुँदैन ।

६. **कोषसितको विनिमय कारोबार** : नेपालले-

(क) माथि उल्लेखित प्रकरण ५ बमोजिम आफ्नो मुद्राको सममूल्य (पार भ्यालु) मा मञ्जूरी भएको तीसौं दिनभन्दा अघि, र

(ख) आफ्नो चन्दा पूरा पूरा भुक्तानी गर्नुभन्दा अघि, कोषसंग विनिमय कारोबार गर्न पाउने छैन ।

७. **जाहेरी र सूचना** : कोषको सदस्यता स्वीकार गर्नुभन्दा पहिले नेपालले स्वीकृतिको लिखतलाई हस्ताक्षर गरी दाखिल गर्न र यस प्रस्तावको प्रकरण ८(क) र (ख) मा लेखिएबमोजिमको धाराहरूमा हस्ताक्षर गर्न आवश्यक सबै काम कारवाई गरिसकेको छ भन्ने कुराको जाहेरी कोषलाई पठाउनु पर्छ र कोषले ती काम कारवाईको सम्बन्धमा अनुरोध गरे बमोजिमको सूचना नेपालले कोषलाई पठाउनु पर्छ ।

८. **सदस्यता स्वीकार गर्ने** : यो प्रस्तावको प्रकरण ७ मा दिइएको शर्तहरू नेपालले पूरा गरेको छ भनी कोषले संयुक्त राज्य अमेरिकाको सरकारलाई सूचना गरेपछि देहायका कुराहरू पूरा गरेको मितिमा नेपाल कोषको सदस्य बन्नेछ :-

(क) नेपालले आफ्नो कानून अनुसार यो प्रस्तावमा उल्लेख गरिएको सबै शर्त र अवस्थाहरू र धाराहरू स्वीकार गरेको छ र धाराहरू र यो प्रस्ताव अन्तर्गतका आफ्नो सबै दायित्वहरू पूरा गर्नको निमित्त नेपालले आवश्यक सबै कदमहरू उठाइसकेको छ भन्ने जाहेरीको लिखत संयुक्त राज्य अमेरिकाको सरकारमा नेपालले दाखिल गर्नु पर्दछ, र

(ख) संयुक्त राज्य अमेरिकाको सरकारको अभिलेख गृह (आर्चिभ्स) मा रहेको धाराहरूको मूल प्रतिलिपिमा नेपालले दस्तखत गर्नुपर्छ ।

९. **सदस्यता स्वीकार गर्ने हद अवधि** : नेपालले यो प्रस्ताव लागू हुने मितिले जुन मिति गभर्नरहरूको बोर्डले यसलाई स्वीकार गरेको मिति हुनेछ ६ महीनाभित्र यो प्रस्तावबमोजिम कोषको सदस्यता

स्वीकार गर्न सक्नेछ, तर असाधारण परिस्थितिले गर्दा यो प्रस्तावबमोजिम नेपालले सदस्यता स्वीकार गर्न सक्ने हद अवधि बढाउन पर्ने भनी कार्यकारी सञ्चालकहरूले देखेमा सो अवधिलाई बढाई पछिल्लो कुनै हद अवधि तोक्न सक्नेछ ।

## ❷अनुसूची - ३

## अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताका धाराहरूको धारा ३ को दफा ४

दफा-४ मुद्राको सट्टा ऋणपत्रहरू स्वीकार गर्ने : कोषले कुनै पनि सदस्यबाट कोषको साधारण खातामा रहेको सदस्यको मुद्रामध्ये कोषको कारोबार (ट्रान्जाक्शन) र सञ्चालन (अपरेशन) का लागि नचाहिने भनी निर्णय गरे अनुसारको कुनै पनि अंशको सट्टा सदस्यले वा धारा १३ को दफा २ अन्तर्गत सदस्यले मनोनित गरेको डिपोजिटरीले जारी गरेको अविनिमेय, निर्ब्याजी र कोषले मागेको बखत मनोनित गरेको डिपोजिटरी कहाँ खोलिएको कोषको खातामा जम्मा गरी अङ्कित मूल्य (फेस भ्यालू) मा भुक्तानी दिनुपर्ने नोट वा यस्तै अरू ऋणपत्रहरू स्वीकार गर्नेछ । यो दफा कोषले सदस्यहरूबाट चन्दाको रूपमा प्राप्त गरेको मुद्राको हकमा मात्र लागू हुने नभई कोषलाई अरू प्रकारबाट तिर्नु पर्ने वा कोषले प्राप्त गरी साधारण खातामा रहने जुनसुकै मुद्राको हकमा लागू हुनेछ ।

## अनुसूची-४

## अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सम्झौताको धाराहरूको धारा ५, दफा १२

दफा-१२ मुद्राको मौज्दातको आकृति : बैंङ्कले कुनै पनि सदस्यबाट धारा २, दफा ७(१) ◖अन्तर्गत बैंङ्कलाई भुक्तानी गरेको सो सदस्यको मुद्राको कुनै अंशको सट्टा वा यस्ता मुद्रामा दिइएको सापटी चुक्ता गर्दा भुक्तानी बेहोर्न त्यस्तो मुद्राको कुनै अंशको सट्टा र आफ्नो कार्य सञ्चालनमा बैंङ्कलाई नचाहिएको त्यस्तो मुद्राको कुनै अंशको सट्टा सदस्यको सरकारले वा सदस्यले मनोनित गरेको डिपोजिटरीले निकालेको बेच बिखन गर्न नहुने, निर्ब्याजी र मागेको बखत मनोनित डिपोजिटरीमा बैंङ्कको नाउँमा जम्मा गरी सममूल्य (पार भ्यालु) मा भुक्तानी दिनु पर्ने नोट वा यस्तै अरू ऋणपत्रहरू स्वीकार गर्नेछ ।

---

❷ दोस्रो संशोधनद्वारा संशोधित ।

◖ धारा २ को दफा ७ (१) यो धाराको दफा ५(१) अन्तर्गत प्रत्येक शेयरको मोलको दुई प्रतिशत सुनमा वा संयुक्त राज्य डलरमा भुक्तानी दिनु पर्नेछ र भुक्तानी गर्ने सूचना आएमा, बाँकी अठार प्रतिशत सदस्यको आफ्नो मुद्रामा भुक्तानी दिनु पर्नेछ ।

## अनुसूची-५

## अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताको धाराहरूको धारा ५, दफा १

धारा ५, दफा १- कोषसित व्यवहार गर्ने एजेन्सीहरू : प्रत्येक सदस्यले कोषसित व्यवहार गर्दा आफ्नो खजाना, सेण्ट्रल बैंङ्क, स्थिरता ल्याउने कोष (स्टेबिलाइजेशन फण्ड) वा यस्तै फिस्कल एजेन्सीद्वारा गर्नेछ र कोषले यस्तै एजेन्सीहरूसित वा द्वारा मात्रै व्यवहार गर्नेछ ।

## अनुसूची-६

## अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताको धाराहरुको धारा १३, दफा २

धारा, १३ दफा २ - डिपोजिटरीहरु :

(क) प्रत्येक सदस्य मुलुकले कोषसित रहेको आफ्नो मुद्राको मौज्दातको निमित्त आफ्नो केन्द्रीय बैंङ्कलाई डिपोजिटरी मनोनित गर्नेछन् वा सो मुलुकको आफ्नो केन्द्रीय बैंङ्क नभएमा कोषलाई मञ्जूर हुने यस्तै अरु संस्थालाई मनोनित गर्नेछन् ।

(ख) कोषले सबभन्दा बढी कोटा हुने पाँच सदस्यहरुले मनोनित गरेको डिपोजिटरीहरुमा र कोषले छान्ने यस्तै अरु मनोनित डिपोजिटरीहरुमा सुन सहित अरु सम्पत्ति आफ्नो भोग चलनमा राख्न सक्नेछ । प्रारम्भिक तवरले कोषको मौज्दातको कमसेकम आधा आफ्नो प्रादेशिक क्षेत्रभित्र कोषको प्रधान कार्यालय भएको सदस्यले मनोनित गरेको डिपोजिटरीमा राखिनेछ र कमसेकम चालीस प्रतिशत माथि उल्लेखित बाँकी चार सदस्यहरुले मनोनित गरेको डिपोजिटरीहरुमा राख्नेछ । तर पनि, कोषद्वारा हुने सुनको सबै हस्तान्तरण, ढुवानी खर्च र कोषलाई आवश्यक पर्न आउने भनी अंजाम गरिएको खर्चलाई ध्यानमा राखी गरिनेछ । असाधारण अवस्थामा कार्यकारी सञ्चालकहरुले कोषसित रहेको सबै वा केही अंश सुनको मौज्दात उचित तवरले सुरक्षित हुन सक्ने स्थानमा सार्न सक्नेछ ।

## अनुसूची-७

## अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सम्झौताको धाराहरुको धारा ५, दफा ११

दफा ११-डिपोजिटरीहरु :

(क) प्रत्येक सदस्य मुलुकले बैंङ्कसित रहेको आफ्नो मुद्राको मौज्दातको निमित्त आफ्नो केन्द्रिय बैंङ्कलाई डिपोजिटरी मनोनित गर्नेछन् वा सो मुलुकको आफ्नो केन्द्रीय बैंङ्क नभएमा बैङ्कलाई मञ्जूर हुने यस्तै अरु संस्थालाई मनोनित गर्नेछन् ।

(ख) बैंङ्कले सबभन्दा बढी संख्यामा शेयर हुने पाँच सदस्यहरुले मनोनित गरेको डिपोजिटरीहरुमा र बैंङ्कले छान्ने यस्तै अरु मनोनित डिपोजिटरीहरुमा सुन सहित अरु सम्पत्ति आफ्नो भोग चलनमा राख्न सक्नेछ । प्रारम्भिक तवरले बैंङ्कको मौज्दातको कमसेकम आधा आफ्नो प्रादेशिक क्षेत्रभित्र बैंङ्कको प्रधान कार्यालय भएको सदस्यले मनोनित गरेको डिपोजिटरीमा राखिनेछ र कमसेकम चालिस प्रतिशत माथि उल्लेखित बाँकी चार सदस्यहरुले मनोनित गरेको डिपोजिटरीहरुमा राखिनेछ । यस्ता डिपोजिटरीहरु मध्ये प्रत्येकले प्रारम्भिक तवरले यसरी मनोनीत गर्ने सदस्यको शेयरहरुमा भुक्तानी गरेको सुनको रकमभन्दा कम नहुने गरी आफूसित राख्न पाउनेछ । तर पनि बैंङ्कद्वारा हुने सुनको सबै हस्तान्तरण, ढुवानी खर्च र बैंङ्कलाई जरुरत पर्न आउने भनी अंजाम गरिएको खर्चलाई ध्यानमा राखी गरिनेछ । असाधारण अवस्थामा कार्यकारी सञ्चालकहरुले बैंङ्कसित मौज्दात रहेको सुनको जम्मै वा केही अंश उचित तवरले सुरक्षित हुन सक्ने ठाउँमा सार्न सक्नेछ ।

## अनुसूची-८

## अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताको धाराहरुको धारा ९ स्थिति, छुट र विशेषाधिकारहरु

धारा ९ दफा १- धाराको उद्देश्य : कोषलाई सुम्पेका काम पूरा गर्न कोषलाई सामर्थ्य बनाउन यो धारामा दिइएको स्थिति, छूट र विशेषाधिकारहरु प्रत्येक सदस्यको प्रादेशिक क्षेत्रमा कोषलाई दिइनेछ ।

दफा २- कोष स्थिति : कोष कानूनी मान्यता प्राप्त व्यक्तित्व हुनेछ र कोषलाई विशेषतः देहायको काम गर्ने अधिकार हुनेछ :-

(i) ठेक्का लिने, दिने,

(ii) चल र अचल सम्पत्ति प्राप्त गर्ने वा बिक्री गर्ने,

(iii) कानूनी कारवाई गर्ने ।

दफा ३- अदालती कारवाईबाट छुट : कोष, कोषको सम्पत्ति र जायज्यथालाई जुनसुकै ठाउँमा भए पनि र जोसंग रहेको भए पनि कुनै कानूनी कारवाईको प्रयोजनको निमित्त वा कुनै ठेक्काको शर्त मुताबिक कोषले स्पष्ट रुपमा प्रकट गरी छूट त्याग गरेमा सो गरे जति बाहेक सबै किसिमको अदालती कारवाईबाट छूट पाइनेछ ।

दफा ४- अरु कारवाईबाट छुट : कोषको सम्पत्ति र जायज्यथालाई जुनसुकै ठाउँमा रहे पनि र जोसित रहे पनि कार्यकारिणी वा कानूनी कारवाईद्वारा खोज तलासी, अधिग्रहण, निस्वामीकरण वा अरु कुनै किसिमको पक्राउबाट छुट पाइनेछ ।

दफा ५- अभिलेख गृह (आर्चिभ्स) सम्बन्धी छुट : कोषको अभिलेख गृह (आर्चिभ्स) भित्र दखल गर्न सकिने छैन ।

दफा ६- जायज्यथामा प्रतिबन्ध नलाग्ने : यस सम्झौताले दिएको कार्य सञ्चालन गर्न आवश्यक भएको हदसम्म कोषको सबै सम्पत्ति र जायज्यथामा कुनै किसिमको प्रतिबन्ध, नियम, नियन्त्रण र मोराटोरिया लाग्ने छैन ।

दफा ७- लेखापढी गर्ने विशेषाधिकार : सदस्यहरुले कोषको अफिसियल लेखापढीलाई अरु सदस्यहरुको अफिसियल लेखापढीलाई सरह नै व्यवहार गर्नेछन् ।

दफा ८-अधिकृत र कर्मचारीहरुको निमित्त छुट र विशेषाधिकार : कोषको सबै गर्भनरहरु, कार्यकारी सञ्चालकहरु, अल्टरनेटहरु, ▲समितिका सदस्यहरु सम्झौताको धारा १२ दफा ३ (जे) अनुसार नियुक्त भएका प्रतिनिधि र माथि उल्लेख गरिएको कुनै पनि व्यक्तिका सल्लाहकारहरु, अधिकृतहरु र कर्मचारीहरुले :-

(i) कोषले छूट त्याग गरेमा बाहेक अफिसियल हैसियतले गरेको काम कार्यहरुमा कानूनी कारवाईबाट छूट पाउनेछ ।

(ii) स्थानीय नागरिक नभएमा, देशान्तरवाससम्बन्धी प्रतिबन्धहरु, विदेशीहरुको रजिष्ट्रेशनसम्बन्धी आवश्यकताहरु, राष्ट्रिय सेवासम्बन्धी दायित्वहरुबाट छूट र विनिमय प्रतिबन्धसम्बन्धी सुविधाहरु सदस्यहरुले अरु सदस्यहरुको सोही समान दर्जाका प्रतिनिधिहरु, अधिकारीवर्गहरु र कर्मचारीहरुलाई दिए सरहनै पाउने छन् ।

(iii) सदस्यहरुले अरु सदस्यहरुको लागि सोही समान दर्जाको प्रतिनिधिहरु, अधिकारीवर्गहरु र कर्मचारीहरुलाई दिए सरहनै भ्रमण सुविधा पाउने छन् ।

दफा ९-करबाट छूट : (क) कोष, यसको जायज्यथा सम्पत्ति, आम्दानी र यो सम्झौताद्वारा अधिकृत यसको सञ्चालन र कारोबारहरुलाई सबै किसिमको कर सबै किसिमको भन्सार महसूलबाट छूट पाइनेछ । कर वा महसूल भुक्तानी वा असूल गर्ने दायित्वबाट पनि कोषले छूट पाउनेछ ।

▲ दोस्रो संशोधनद्वारा थप ।

(ख) स्थानीय नागरिक, स्थानीय प्रजा वा अरु स्थानीय राष्ट्रिय नभएका कोषका कार्यकारी सञ्चालकहरु, अल्टरनेटहरु, अधिकारीहरु वा कर्मचारीहरुलाई कोषले दिने तलब र परिलाभमा कुनै पनि कर लिइने छैन ।

(ग) कोषले निकालेको दायित्व वा सिक्योरिटी र त्यस उपरको लाभाँश वा ब्याज लगायतमा जोसित रहेको भए पनि कुनै किसिमको कर लिइने छैन :-

(१) यदि त्यसले सो दायित्व वा सिक्योरिटीलाई मात्र त्यसको सिर्जनाको कारणले फरक व्यवहार गरेको छ भने, वा

(२) यदि त्यस्तो कर व्यवस्थाको निमित्त सम्पूर्ण अधिकार क्षेत्रिय आधार सो दायित्व वा सक्योरिटी निकालिएको, भुक्तानी गर्नु पर्ने नगरिएको वा भुक्तानी गरिएको ठाउँ वा मुद्रा वा कोषले राखेको कुनै कार्यालय वा कारोबारको स्थान भएमा,

दफा १०- धाराको प्रयोग : प्रत्येक सदस्यले यो धारामा दिइएको सिद्धान्तहरुलाई आफ्नो कानून मुताबिक लागू गराउने उद्देश्यको निमित्त आफ्नो प्रादेशिक क्षेत्रभित्र आवश्यकता अनुसारको कार्य गर्नेछ र आफूले गरेको कामको पूरा विवरणको सूचना कोषलाई दिइनेछ ।

## अनुसूची-९

## अन्तर्राष्ट्रिय पुनर्निर्माण एवं विकास बैंङ्कको सम्झौताको धाराहरुको धारा ७

## स्थिति, छूट र विशेषाधिकारहरु

धारा ७ दफा १- धाराको उद्देश्य : बैंङ्कलाई सुम्पेको काम पूरा गर्न बैंङ्कलाई सामर्थ्य बनाउन यो धारामा दिइएको स्थिति, छूट र विशेषाधिकारहरु प्रत्येक सदस्यको प्रादेशिक क्षेत्रमा बैंङ्कलाई दिइनेछ ।

दफा २-बैंङ्कको स्थिति : बैंङ्क कानूनी मान्यता प्राप्त व्यक्तित्व हुनेछ र बैंङ्कलाई विशेषतः देहायको काम गर्ने अधिकार हुनेछ :-

(१) ठेक्का लिने,

(२) चल र अचल सम्पत्ति प्राप्त गर्ने वा बिक्री गर्ने,

(३) कानूनी कारवाई गर्ने ।

दफा-३ अदालती कारवाईको सम्बन्धमा बैंङ्कको स्थान : बैंङ्कले आफ्नो कार्यालय भएका वा सेवा वा सूचना स्वीकार गर्नका लागि बैंङ्कले एजेण्ट नियुक्त गरेको वा सिक्योरिटीहरु निकालेको वा ग्यारेण्टी गरेको कुनै सदस्यको प्रादेशिक क्षेत्रमा कानूनबमोजिम अधिकार प्राप्त अदालतमा मात्र बैंङ्कको बिरुद्ध कारवाई चलाउन सकिनेछ । सदस्यहरुले वा सदस्यहरुको निमित्त काम गर्ने व्यक्तिहरुले वा सदस्यहरुबाट दाबी लिने

व्यक्तिहरुले कुनै कारवाई चलाउन सक्ने छैन । बैंङ्कको सम्पत्ति र जायज्यथालाई जहाँसुकै रहेको जोसित रहेको भए पनि बैंङ्कको बिरुद्ध अन्तिम फैसला हुनुभन्दा अघि पक्राउ, कब्जा वा कुर्किबाट छुट दिइनेछ ।

दफा ४- जायज्यथा पक्राउ हुनुबाट छुट : बैंङ्कको सम्पत्ति र जायज्यथालाई जहाँसुकै रहेको र जोसित रहेको भए पनि कार्यकारिणी वा कानूनी कारवाईद्वारा खोज तलासी, अधिग्रहण, अपहरण, निस्वामीकरण वा अरु कुनै किसिमको पक्राउबाट छूट पाइनेछ ।

दफा ५- अभिलेख गृह (आर्चिभ्स) सम्बन्धी छूट : बैंङ्कको अभिलेख गृह (आर्चिभ्स) भित्र दखल गर्न सकिने छैन ।

दफा-६ जायज्यथामा प्रतिबन्ध नलाग्ने : यस सम्झौताले दिएको कार्य सञ्चालन गर्न आवश्यक भएको हदसम्म यस सम्झौताको दफाहरुको अधीनमा रही, बैंङ्कको सबै सम्पत्ति र जायज्यथामा कुनै किसिमको प्रतिबन्ध, नियम, नियन्त्रण र मोराटोरियो लाग्ने छैन ।

दफा ७- लेखापढी गर्ने विशेषाधिकार : सदस्यहरुले बैंङ्कको अफिसियल लेखापढीलाई अरु सदस्यहरुको अफिसियल लेखापढीलाई सरह नै व्यवहार गर्नेछन् ।

दफा ८- अधिकृत र कर्मचारीहरुको निमित्त छुट र विशेषाधिकारहरु : बैंङ्कको सबै गर्भनरहरु, कार्यकारी सञ्चालकहरु, अल्टरनेटहरु, अधिकृतहरु र कर्मचारीहरुले :-

(१) बैंङ्कले छूट त्याग गरेमा बाहेक अफिसियल हैसियतले गरेको काम कार्यहरुमा कानूनी कारवाईबाट छूट पाउनेछ ।

(२) स्थानीय नागरिक नभएमा देशान्तरबाससम्बन्धी प्रतिबन्धहरु, विदेशीहरुको रजिष्ट्रेशनसम्बन्धी आवश्यकताहरु, राष्ट्रिय सेवासम्बन्धी दायित्वहरुबाट छूट र विनिमय प्रतिबन्धसम्बन्धी सुविधाहरु सदस्यहरुले अरु सदस्यहरुको सोही समान दर्जाका प्रतिनिधिहरु, अधिकारीवर्गहरु र कर्मचारीहरुलाई दिए सरह नै पाउनेछन् ।

(३) सदस्यहरुले अरु सदस्यहरुको सोही समान दर्जाको प्रतिनिधिहरु, अधिकारीवर्गहरु र कर्मचारीहरुलाई दिए सरह नै भ्रमण सुविधा पाउनेछन् ।

दफा ९- करबाट छूट : (क) बैंङ्क, यसको जायज्यथा, सम्पत्ति, आम्दानी र यो सम्झौताद्वारा अधिकृत यसको सञ्चालन र कारोवारहरुलाई सबै कर र सबै भन्सार महसूलबाट छूट पाइने छ । कुनै कर वा महसुल वा असुल भुक्तानी गर्ने दायित्वबाट पनि बैंङ्कले छूट पाउनेछ ।

(ख) स्थानीय नागरिक, स्थानीय प्रजा वा अरु स्थानीय राष्ट्रिय नभएका बैंङ्कका कार्यकारी सञ्चालकहरु, अल्टरनेटहरु, अधिकारीवर्गहरु वा कर्मचारीहरुलाई बैंङ्कले दिने तलब र परिलाभमा कुनै पनि कर लिइने छैन ।

(ग) बैंङ्कले निकालेको दायित्व र सिक्योरिटी (त्यस उपरको लाभांश वा ब्याज) लगायतमा जोसित रहेको भए पनि कुनै किसिमको कर लिइने छैन :-

(१) यदि त्यसले सो दायित्व वा सिक्योरिटीलाई मात्र त्यसको सिर्जनाको कारणले फरक व्यवहार गरेको छ भने, वा

(२) यदि त्यस्तो कर व्यवस्थाको निमित्त सम्पूर्ण अधिकार क्षेत्रीय आधार सो दायित्व वा सिक्योरिटी निकालिएको, वा भुक्तानी गर्नु पर्ने गरिएको वा भुक्तानी गरिएको ठाउँ वा मुद्रा वा बैंङ्कले राखेको कुनै कार्यालय वा कारोबारको स्थान भएमा ।

(घ) बैंङ्कले ग्यारेन्टी दिएको कुनै दायित्व वा सिक्योरिटी (त्यसको लाभांश वा ब्याज) लगायतमा जोसित रहेको भए पनि कुनै किसिमको कर लिइने छैन :-

(१) यदि त्यसले सो दायित्व वा सिक्योरिटीलाई बैंङ्कले ग्यारेण्टी गरेको कारणले फरक व्यवहार गरेकोछ भने, वा

(२) यदि त्यस्तो कर व्यवस्थाको निमित्त सम्पूर्ण अधिकार क्षेत्रीय आधार बैंङ्कले राखेको कुनै कार्यालय वा कारोबारको स्थान भएमा ।

दफा १०-धाराको प्रयोग : प्रत्येक सदस्यले यो धारामा दिइएको सिद्धान्तहरु आफ्नो कानून मुताविक लागू गराउने उद्देश्यको निमित्त आफ्नो प्रादेशिक क्षेत्रभित्र आवश्यकता अनुसारको कार्य गर्नेछ र आफूले गरेको कामको पूरा विवरणको सूचना बैंङ्कलाई दिनेछ ।

## अनुसूची-१०

## अन्तर्राष्ट्रिय द्रव्य कोषको सम्झौताको धाराहरुको धारा ८ दफा २(ख)

धारा ८ दफा २ (ख) : यस सम्झौता अनुकूल कायम गरिएको वा लगाइएको कुनै सदस्यको मुद्रा संलग्न हुने र सो सदस्यको विनिमय नियन्त्रण नियमहरुको प्रतिकूल भएको विनिमयसम्बन्धी ठेक्काहरु कुनै सदस्यको प्रादेशिक क्षेत्रभित्र लागू हुने छैन । त्यस्को अतिरिक्त सदस्यहरुले आपसी कुराकानीद्वारा कुनै एक सदस्यको विनिमय नियन्त्रण नियमहरुलाई बढी मात्रामा कार्यान्वित गर्ने उद्देश्यले बनेको साधनहरुमा सहयोग गर्न सक्ने छन् तर त्यस्तो साधन र नियमहरु यस सम्झौता अनुकूल हुनुपर्छ ।

## ➔अनुसूची-११

## कोष सम्झौताको धारा १५

धारा १५ दफा १. विशेष रकम झिक्ने अधिकारलाई बाँडफाँट गर्ने अधिकार : कायम रहेको संचित सम्पत्तिको पूरकको आवश्यकता भएमा सो पूर्ति गर्न विशेष रकम झिक्ने खातामा भागिदार भएका सदस्यहरुलाई विशेष रकम झिक्ने अधिकारको बाँडफाँट गर्न कोषलाई अधिकार हुनेछ ।

धारा १५ दफा २. विशेष रकम झिक्ने अधिकारको मूल्यांकन : विशेष रकम झिक्ने अधिकारहरुको मूल्यांकन गर्ने पद्धति कोषले आफ्नो कूल मतदान शक्तिको ७० प्रतिशतको बहुमतले निर्णय गर्नेछ तर मूल्यांकन गर्ने प्रचलित पद्धतिमा सैद्धान्तिक वा मौलिक परिवर्तन गर्नु परेमा कोषको आफ्नो कूल मतदान शक्तिको ८५ प्रतिशतको बहुमतको आवश्यकता पर्नेछ ।

कोष सम्झौताको धारा १६ दफा ३

धारा १६ दफा ३. अभिलेखन र सूचना : विशेष रकम झिक्ने अधिकारहरुको (मौज्दात होल्डिंग्स) मा हुने सबै हेरफेर कोषले विशेष रकम झिक्ने खातामा अभिलेखन गरेपछि मात्र लागू हुनेछ । भागिदारहरुले विशेष रकम झिक्ने अधिकारहरुको प्रयोग यस सम्झौताको जुन उपबन्धको अन्तर्गत गरिएको हो त्यस्को सूचना कोषलाई दिनेछन् । कोषले आफ्नो काम कारवाईको लागि आवश्यक सम्झौताको सूचनाहरु भागिदारहरुबाट पेश गराउन सक्नेछ ।

कोष सम्झौताको धारा १७ दफा १

धारा १७ दफा १. भागिदारहरु : आफ्नो कानून अनुसार विशेष रकम झिक्ने खाताको भागिदारको सबै दायित्व वहन गर्न मञ्जूरीको उल्लेख गरिएको लिखत कोषमा दाखिल गर्ने प्रत्येक सदस्य, लिखित दाखिला गरेको मितिदेखि सो खाताको भागिदार हुनेछ तर विशेष रकम झिक्ने अधिकारसम्बन्धी सबै धाराहरु लागू नभएसम्म र सम्पूर्ण कोटाको कमसेकम ७५ प्रतिशत भएका सदस्यहरुले यस दफा अन्तर्गत लिखित दाखिला नगरेसम्म कुनै सदस्य त्यस्तो भागिदार बन्ने छैन ।

➔ पहिलो संशोधनद्वारा थप भई दोस्रो संशोधनद्वारा संशोधित ।

कोष सम्झौताको धारा २२

धारा २२ भागिदारहरुको सामान्य दायित्व : यस सम्झौताका अरु धाराहरु अन्तर्गत विशेष रकम झिक्ने अधिकारको सम्बन्धमा ग्रहण गरिएको दायित्वको अतिरिक्त विशेष रकम झिक्ने अधिकारको प्रभावकारी सञ्चालनलाई सुगम पार्न, यस सम्झौता अनुसार विशेष रकम झिक्ने अधिकारहरुको समुचित प्रयोग गर्न तथा विशेष रकम झिक्ने अधिकारलाई अन्तर्राष्ट्रिय मौद्रिक पद्धतिमा प्रमुख सञ्चित सम्पत्ति बनाउन प्रत्येक भागिदारको कोष र अरु भागिदारहरुसित सहयोग गर्न स्वीकार गर्दछ ।

## ❷अनुसूची-१२

## कोष सम्झौताको धारा २१ (बी)

धारा २१(बी) यस सम्झौताको धारा ९ अन्तर्गत प्रदान गरिएको विशेषाधिकार स्थिति र छूटहरुका अतिरिक्त विशेष रकम झिक्ने अधिकारहरुमा वा त्यसको काम कारवाई र व्यवहारमा कुनै कर लगाइने छैन ।

## +अनुसूची-१३

## कोष सम्झौताको धारा १९ ❷को दफा ४

धारा १९ ❷दफा ४. मुद्रा प्रदान गर्ने दायित्व : यस धाराको दफा ५ अन्तर्गत कोषले तोकेको भागिदारले यस धाराको दफा २(ए) अन्तर्गत विशेष रकम झिक्ने अधिकारहरु प्रयोग गर्ने भागिदारलाई माग भएमा ❷स्वतन्त्र रुपले प्रयोग गर्न सकिने मुद्रा प्रदान गर्नेछ । भागिदारको मुद्रा प्रदान गर्ने दायित्व उसको खूद सञ्चित मागभन्दा बढी भएको विशेष रकम झिक्ने अधिकार त्यो देशको खूद सञ्चित मागभन्दा दोब्बर बढी भएसम्म वा कोष र भागिदारको बीचमा मञ्जूरी भएबमोजिमको माथिल्लो हदसम्म मात्र सीमित रहनेछ । कुनै भागिदारले दिन अनिवार्य भएको वा मञ्जूरी भएबमोजिम माथिल्लो हदभन्दा बढी मुद्रा प्रदान गर्न सक्नेछ ।

❷ दोस्रो संशोधनद्वारा संशोधित ।

\+ पहिलो संशोधनद्वारा थप ।

धारा १९ [❷]दफा ५.<u>मुद्रा प्रदान गर्न भागिदार तोक्ने</u> : (ए) कोषले यस धाराको २(ए) र ४ को प्रयोजनको लागि विशेष रकम झिक्ने अधिकारहरुको निश्चित रकमको मुद्रा प्रदान गर्न भागिदारहरुलाई तोकी भागिदारहरुले आफ्नो विशेष रकम झिक्ने अधिकारहरु प्रयोग गर्न पाउने निश्चित गर्नेछ । निम्नलिखित सामान्य सिद्धान्तहरु र कोषले समय समयमा मानेका सिद्धान्तहरुको आधारमा तोक्ने काम हुनेछ :-

(१)भुक्तानी सन्तुलन र सम्पूर्ण सञ्चयको स्थिति पर्याप्त बलियो भएको भागिदारलाई तोक्न सकिनेछ । तर यसले बलियो सम्पूर्ण सञ्चय स्थिति भएको कुनै भागिदारलाई यस्को भुक्तानी संतुलनमा साधारण घाटा भए पनि तोकिनमा कुनै बाधा पार्ने छैन । भागिदारहरुलाई यस तरीकाले तोकिनेछ जसले उनीहरुमा पछि विशेष रकम झिक्ने अधिकारीहरुको सन्तुलित विभाग विभाजन बढाउनेछ ।

(२)यस धाराको ६ (ए) अन्तर्गत पुनः संस्थापन बढाउनलाई विशेष रकम झिक्ने अधिकारहरुको मौज्दातमा नकारात्मक संतुलन घटाउन र यस धाराको दफा ३ (ए) मा गरिएको आज्ञा पूर्तिको असफलताको प्रभावलाई हटाउन भागिदारहरु तोकिन सकिने छन् ।

(३)कोषले भागिदारहरुलाई तोक्दा साधारणतः (२) अन्तर्गत तोक्ने उद्देश्यको पूर्तिको लागि विशेष रकम झिक्ने अधिकारहरु प्राप्त गर्न आवश्यकता भएकालाई अग्राधिकार दिनेछ ।

(बी) कोषले (ए) (१) अन्तर्गत भागिदारहरुमा पछि विशेष रकम झिक्ने अधिकारहरुको संतुलित विभाजन बढाउने उद्देश्य राखी अनुसूची “एफ” वा तल (सी) अन्तर्गत जारी गरिएको तोक्ने सम्बन्धमा नियमहरु लागू गर्नेछ ।

(सी) तोक्ने सम्बन्धमा नियमहरु उपर प्रथम तथा त्यसपछिको प्रत्येक मूल्य अवधिको अन्तमा पुनः विचार हुनेछ र पुनः विचारको परिणाम स्वरुप कोषले नयाँ नियमहरु जारी गर्न सक्नेछ । नयाँ नियमहरु लागू नभएमा पुनः विचार गर्दाको समय लागू भएका नियम लागू भइरहनेछ ।

---

❷ दोस्रो संशोधनद्वारा संशोधित ।

धारा १९ ❷दफा २.	(ए) भागिदारहरुको बीचको व्यवहार : कुनै भागिदारले यस धाराको दफा ५ अन्तर्गत तोकिएका कुनै भागिदारबाट बराबर रकमको मुद्रा प्राप्त गर्न आफ्नो विशेष रकम झिक्ने अधिकारहरुको प्रयोग गर्न सक्नेछ ।

## +अनुसूची–१४

## कोषको सम्झौताको धारा १९ ❷को दफा ६(ए)

धारा १९ ❷दफा ६.	(ए) पुनः संस्थापन : आफ्नो विशेष रकम झिक्ने अधिकारहरु प्रयोग गर्ने भागिदारहरुले त्यस्को आफ्नो मौज्दातको पुनः संस्थापनको अनुसूची "जी" वा तल (बी) अन्तर्गत जारी गरिएको पुनः संस्थापनसम्बन्धी नियमहरुबमोजिम गर्नु पर्छ ।

❷ दोस्रो संशोधनद्वारा संशोधित ।
\+ पहिलो संशोधनद्वारा थप ।